**॥ श्री गणेशाय नमः ॥**

**ॐ**

**श्री परमात्मने नमः**

**॥ अथ विष्णुप्रोक्तधर्मशास्त्र प्रारम्भः ॥**

**॥ अथ प्रथमोऽध्यायः ॥**

**(पहिलो अध्याय)**

**विष्णुमेकाग्रमासीनं श्रुतिस्मृतिविशारदम् ।**
**पप्रच्छुर्मुनयः सर्वे कलापग्रामवासिनः ॥१॥**

कलाप गाउँ (प्राचीन कालको एक गाउँ) मा बस्ने श्रुति एवं स्मृतिका विज्ञ सारा मुनिहरूले एकाग्र चिन्तमा बसेका श्रीविष्णु समक्ष यो प्रश्न गरे ।

**कृते युगे ह्यपक्षीणे लुप्तो धर्म्मस्सनातनः ।**
**तत्र वै शीर्य्यमाणे च धर्मो न प्रतिमार्गितः ॥२॥**

सत्ययुग बितेपछि सनातन धर्म लोप भयो र कसैले पनि यसको खोजीनीति गरेन ।

**त्रेतायुगेऽथ संप्राप्ते कर्तव्यश्चास्य संग्रहः ।**
**यथा संप्राप्यतेऽस्माभिस्तत्त्वन्नो वक्तुमर्हसि ॥३॥**

अहिले त्रेतायुग चलिरहेछ, यसबेला धर्मसंग्रह अवश्य गर्नु पर्दछ, त्यो धर्म जे गर्दा हामीलाई प्राप्त हुन्छ त्यो बताउनु होस् ।

**वर्णाश्रमाणां यो धर्मो विशेषश्चैव यः कृतः ।**
**भेदस्तथैव चैषां यस्तन्नो ब्रूहि द्विजोत्तम ॥४॥**

वर्णाश्रमका जेजस्ता विशेषता ऋषिहरूले बताएका छन् अनि वर्ण र आश्रमका बीचमा जो आपसी भिन्नता बताएका छन्, हे द्विजोत्तम ! त्यो हजुर हामीलाई बताउनु होस् ।

**ऋषीणां समवेतानां त्वमेव परमो मतः ।**
**धर्मस्येह समस्तस्य नान्यो वक्तास्ति सुव्रत ॥५॥**

यहाँ उपस्थित ऋषिहरूमा हजुर सर्वश्रेष्ठ हुनुहुन्छ । हे सुव्रत ! सबै धर्मको व्याख्या गर्न सक्षम हजुरजत्तिको अरु कोही छैन ।

**श्रुत्वा धर्मं चरिष्यामो यथावत्परिभाषितम् ।**
**तस्माद्ब्रूहि द्विजश्रेष्ठ धर्मकामा इमे द्विजाः ॥६॥**

हजुरले बताए बमोजिमको धर्माचरण हामी गर्नेछौं । यसैले हजुर धर्मको त्यो स्वरुपलाई बताउनु होस्, हामी सबै धर्माचरणको अभिलाषी छौं ।

**इत्युक्तो मुनिभिस्तैस्तु विष्णुः प्रोवाच तांस्तदा ।**
**अनघाः श्रूयतां धर्मो वक्ष्यमाणो मया क्रमात् ॥७॥**

यसरी सबैले विष्णुसँग आग्रह गरेपछि उहाँले भन्नु भयो–हे पापरहित मुनिगण ! म जुन धर्मलाई मिलाएर भन्ने छु, त्यसलाई ध्यान दिएर सुन्नुहोस् ।

**ब्राह्मणः क्षत्रियोः वैश्यः शूद्रश्चैव तथा परे ।**
**एतेषां धर्मसारं यद्वक्ष्यमाणं निबोधत ॥८॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र वा अन्य श्रोतागण ! म धर्मको जुन सार भन्दछु, त्यसलाई बुझेर सुन ।

**ऋतावृतौ तु संयोगाद्ब्राह्मणो जायते स्वयम् ।**
**तस्माद्ब्राह्मणसंस्कारं गर्भादौ तु प्रयोजयेत् ॥९॥**

ऋतुकालमा स्त्रीपुरुषको संयोगबाट उत्पन्न हुने ब्राह्मणको संस्कार गर्भकालको शुरुबाट नै शुरु गरियोस् ।

**सीमन्तोन्नयनं कर्म न स्त्रीसंस्कार इष्यते ।**
**गर्भस्यैव तु संस्कारो गगर्भेगर्भे प्रयोजयत् ॥१०॥**

सीमन्तोन्नयन संस्कार स्त्रीको संस्कार होइन, यसलाई गर्भमा रहेको शिशुको संस्कार मानी गर्नु पर्दछ ।

**जातकर्म तथा कुर्यात्पुत्रे जाते यथोदितम् ।**

**वहिर्निष्क्रमणं चैव तस्य कुर्याच्छिशोः शुभम्॥११॥**

पुत्र जन्मेपछि शास्त्रीय विधिले जातकर्म गर्नू । केही समय पछि शुभ साइतमा बालकको घर बाहिर निकाल्ने कर्म (संस्कार) गर्नू ।

**षष्ठे मासे च सम्प्राप्ते अन्नप्राशनमाचरेत् ।**
**तृतीयेऽब्दे च संप्राप्ते केशकर्म समाचरेत्॥१२॥**

बालक जन्मेको छ महिना पछि पास्नी गर्नू । बालक जन्मेको तीन वर्ष पुगेपछि केशकर्म गर्नू ।

**गर्भाष्टमे तथा कर्म ब्राह्मणस्योपनायनम् ।**
**द्विजत्वे त्वथः सम्प्राप्ते सावित्र्यामधिकारभाक्॥१३॥**

यज्ञोपवित संस्कार पछि मात्र द्विजलाई गायत्री जपको अधिकार हुने हुनाले गर्भ रहेको दिनबाट गनी आठौं वर्षमा ब्राह्मणको उपनयन संस्कार गर्नू ।

**गर्भादिकादशे सैके कुर्यात्क्षत्रियवैश्ययोः ।**
**कारयेद्द्विजकर्माणि ब्राह्मणेन यथाक्रमम्॥१४॥**

गर्भ रहेको दिनदेखि एघारौं वर्षमा क्षत्रियको र बाह्रौं वर्षमा वैश्यको ब्राह्मणद्वारा उपनयन संस्कार गराउनू ।

**शुद्रश्चतुर्थो वर्णस्तु सर्वसंस्कारवर्जितः ।**
**उक्तस्तस्य तु संस्कारो द्विजे स्वात्मनिवेदनम्॥१५॥**

शूद्रादि चतुर्थ वर्णको लागि संस्कार वर्जित छ, तिनले आफूलाई द्विजलाई समर्पण गर्नु नै संस्कार हो ।

**यो यस्य विहितो दण्डो मेखलाजिनधारणम् ।**
**सूत्रं वस्त्रं च गृह्णीयाद्ब्रह्मचर्येण यन्त्रित॥१६॥**

ब्रह्मचर्याश्रममा जानु अघि शास्त्र अनुकुलका जनै, दण्ड, मेखला, मृगआदिका छाला, सूत्र, वस्त्र आदि वर्ण अनुसार लिनू ।

**ब्राह्मे मुहूर्त उत्थाय चोपस्पृश्य पयस्तथा ।**
**त्रिराचाम्य ततः प्राणांस्तिष्ठेन्मौनीसमाहितः ॥१७॥**

ब्राह्ममुहूर्तमा उठेर जल छोई तीन पटक आचमन र प्राणायाम गरी मौन रहनू ।

**अब्दैवतैः पवित्रैस्तु कृत्वात्मपरिमार्जनम् ।**
**सावित्रीं च जपंस्तिष्ठेदासूर्योदयनात्पुरा ॥१८॥**

वरुण देवताका मन्त्र पढी नुहाउनु वा कुशपानी शरीरमा छर्कनू । सूर्य नउदाएसम्म गायत्री जप गरिरहनू ।

**अग्निकार्यं ततः कुर्यात्प्रातरेव व्रतं चरेत् ।**
**गुरवे तु ततः कुर्यात्पादयोरभिवादनम् ॥१९॥**

बिहान गायत्री जप गरेपछि अग्निहोत्र यज्ञ गर्नू, महनाम्न्यादि व्रत गर्नू अनि गुरुका चरणमा दण्डवत गर्नू ।

**समित्कुशांश्चोदकुम्भमाहृत्य गुरवे व्रती ।**
**प्राञ्जलिः सम्यगासीन उपस्थाय यतः सदा ॥२०॥**

गुरु सेवाका लागि समिधा, कुश, जलपूर्ण घडा लेराई विनम्रता पूर्वक हाथ जोडी सौम्य भई गुरुको नित्य स्तुति गर्नू ।

**यं यं ग्रन्थमधीयीत तस्य तस्य व्रतं चरेत् ।**
**सावित्र्युपक्रमात्सर्वमावेदग्रहणोत्तरम् ॥२१॥**

जे जे ग्रन्थ अध्ययन गर्ने हो त्यो सम्बन्धी व्रत बस्नु र सावित्री उपदेशको क्रमानुसार सबै वेद पढ्नू ।

**द्विजातिषु चरेद्भैक्ष्यं भिक्षाकाले समागते ।**
**निवेद्य गुरवेऽश्नीयात्सम्मतो गुरुणा व्रती ॥२२॥**

द्विजाति ब्रह्मचारीले भिक्षाकालमा भिक्षा माग्नू र सो भिक्षा गुरुलाई समर्पित गरी उनको आज्ञा लिएर भोजन गर्नू ।

**सायं सन्ध्यामुपासीनो गायत्र्यष्टशतं जपेत् ।**
**द्विकालभोजनार्थं च तथैव पुनराहरेत् ॥२३॥**

बेलुकीको सन्ध्योपासना गरि सकेपछि आठ सय पटक गायत्री जप गर्नू । बेलुकीको भोजनका लागि पनि बिहानको झैं भिक्षा माग्न हिँड्नू ।

**वेदस्वीकरणे हृष्टो गुर्वधीनो गुरोर्हितः ।**
**निष्ठां तत्रैव यो गच्छन्नैष्ठिकस्स उदाहृतः ॥२४॥**

जो ब्रह्मचारी वेद पढ्नमा प्रसन्न, गुरुको आज्ञाकारी र हितकारी तथा गुरुप्रति सम्मान दर्शाउँदछ उसलाई नैष्ठिक अर्थात पूर्ण ब्रह्मचारी भनिन्छ ।

**अनेन विधिना सम्यक्कृत्वा वेदमधीत्य च ।**
**गृहस्थधर्ममाकांक्षन्गुरुगेहादुपागतः ॥२५॥**

गुरुकुलमा रही विधिविधानले ब्रह्मचर्यधर्मको पालनागर्दै वेदाध्ययन समाप्त गरी गृहस्थाश्रमधर्मको चाहना गरुन् ।

**अनेनैव विधानेन कुर्याद्दारपरिग्रहम् ।**
**कुले महति सम्भूतां सवर्णां लक्षणान्विताम् ॥२६॥**

विधिपूर्वक ब्रह्मचर्य पालना गरी वेदाध्ययन सकी उच्च कुलमा उत्पन्न भएकी, सजातीय र सुलक्षणा कन्यासँग विवाह गर्नू ।

**परिणीय तु षण्मासान्वत्सरं वा न संविशेत् ।**
**औदुम्बरायणो नाम ब्रह्मचारी गृहे गृहे ॥२७॥**

विवाह पछि पनि छ महिना वा एक वर्षसम्म सम्भोग नगरीकन बस्नेलाई औदुम्बर ब्रह्मचारी भनिन्छ ।

**ऋतुकाले तु संप्राप्ते पुत्रार्थो संविशेत्तदा ।**

**जाते पुत्रे तथा कुर्यादग्न्याधेयं गृहे वसन्॥२८॥**

ऋतुकाल भएपछि पुत्रको इच्छा हुनेले सम्भोग गरुन्। छोरो जन्मेपछि घरमै बसेर पनि अग्निहोत्र व्रत गरुन्।

**पुत्रे जातेऽनृतौ गच्छन्संप्रदुष्येत्सदा गृही।**
**चतुर्थे ब्रह्मचारी च गृहे तिष्ठन्न विस्मृतः॥२९॥**

छोरो जन्मेपछि ऋतुमती नभई सम्भोग गर्ने गृहस्थी दोषी हुन्छ। चौथो छोरो जन्मेपछि घरैमा बसिरहने गृहस्थी र ब्रह्मचारी दुबै दोषी हुन्छन्।

**॥ इति वैष्णवधर्मशास्त्रे प्रथमोऽध्यायः॥१॥**

॥ वैष्णव धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
भावानुवाद गरिएको पहिलो अध्याय सकियो॥



**॥ अथ द्वितीयोऽध्यायः॥**
**(दोश्रो अध्याय)**

**अतः परं प्रवक्ष्यामि गृहिणां धर्ममुत्तमम्।**
**प्राजापत्यपदस्थानं सम्यक्कृत्यं निबोधत॥१॥**

यसपछि म गृहस्थले अँगाल्नु पर्ने उत्तम धर्मका बारेमा भन्छु, जसले ब्रह्मलोकमा स्थान पाइन्छ, त्यो गृहस्थ धर्मलाई ध्यान दिएर सुन।

**सर्वः कल्ये समुत्थाय कृतशौचः समाहितः।**
**स्नात्वा सन्ध्यामुपासीत सर्वकालमतन्द्रितः॥२॥**

सबेरै उठ्नु र शौच आदि नित्यकर्म सक्नू। नुहाएर अल्छी नगरी सन्ध्योपासना गर्नू।

**अज्ञानाद्यदि वा मोहाद्रात्रौ यद्दुरितं कृतम्।**
**प्रातः स्नानेन तत्सर्वं शोधयन्ति द्विजोत्तमाः॥३॥**

उत्तम द्विजले जानेर वा नजानेर रातमा गरेका दुष्कर्महरु बिहानको स्नानले नाशिन्छन् ।

**प्रविश्याथाग्निहोत्रं तु हुत्वाग्निं विधिवत्ततः ।**
**शुचौ देशे समासीनःस्वाध्यायं शक्तितोऽभ्यसेत् ॥४॥**

नुहाए पछि अग्निशालामा प्रवेश गरी अग्निहोत्र गर्नू । पवित्र स्थलमा बसी शक्ति अनुसार स्वाध्याय गर्नू ।

**स्वाध्यायान्ते समुत्थाय स्नानं कृत्वा तु मंत्रवित् ।**
**देवानृषीन्पितृंश्चापि तर्पयेत्तिलवारिणा ॥५॥**

स्वाध्याय सकी उठेर मन्त्र पढ्दै नुहाए पछि देव, ऋषि र पितृलाई तिलपानीले तर्पण दिनू ।

**मध्याह्ने त्वथ संप्राप्ते शिष्टं भुञ्जीत वाग्यतः ।**
**भुक्तोपविष्टो विश्रान्तो ब्रह्म किञ्चिद्विचारयेत् ॥६॥**

मध्याह्न भएपछि वलिवैश्वदेव गरी बाँकी अन्न मौन रही खानू । खाएर केही छिन आराम गरी ब्रह्मचिन्तन गर्नू ।

**इतिहासं प्रयुञ्जीत त्रिकालसमये गृही ।**
**काले चतुर्थे संप्राप्ते गृहे वा यदि वा बहिः ॥७॥**

दिनको तेश्रो भागमा महाभारत आदि इतिहास पढ्नू । दिनको चौथो भागमा घरमा वा घरबाहिर...।

**आसीनः पश्चिमां सन्ध्यां गायत्रीं शक्तितो जपेत् ।**
**हुत्वा चाथाग्निहोत्रं तु कृत्वा चाग्निपरिक्रमाम् ॥८॥**

पश्चिमतिर फर्की साँझमा सन्ध्योपासना र यथाशक्ति गायत्रीजप गर्नू । साँझमा जप पछि अग्निहोत्र गरी अग्निको प्रदक्षिणा गर्नू ।

**बलिं च विधिवद् दत्त्वा भुञ्जीत विधिपूर्वकम् ।**
**दिवा वा यदि वा रात्रौ अतिथिस्त्वाव्रजेद्यदि ॥९॥**

विधिपूर्वक बलिवैश्वदेव गरी विधिपूर्वक खानू । दिउसो वा रातमा यदि अतिथि आउँदछन् भने...।

**तृणभूवारिवाग्भिस्तु पूजयेत्तं यथाविधि ।**
**कथाभिः प्रीतिमाहृत्य विद्यादीनि विचारयेत् ॥१०॥**

कुशासन, भूमि, जल र वाणीले तिनको स्वागतसत्कार गर्नू । तपाइँ आएर म धन्य भएँ भन्दै सन्तुष्ट पारी विद्या आदि विषयका कुराकानी गर्नू ।

**संनिवेश्याथ विप्रन्तु संविशेत्तदनुज्ञया ।**
**यदि योगी तु संप्राप्तो भिक्षार्थी समुपस्थितः ॥११॥**

अतिथिलाई सुताएर उनको अनुमतिमा आफू सुत्नू । भिक्षाका लागि कुनै योगी आए..।

**योगिनं पूजयेन्नित्यमन्यथा किल्बिषी भवेत् ।**
**पुरे वा यदि वा ग्रामे योगी सन्निहितो भवेत् ॥१२॥**

योगीलाई नित्य पूजा गर्नू नत्र पाप लाग्दछ । यदि यस्ता योगी कुनै नगर वा गाउँमा आइपुगे..।

**पूज्या नित्यं भवंत्येव सर्वे चैव निवासिनः ।**
**तस्मात्संपूयन्नित्यं योगिनं गृहमागतम् ॥१३॥**

ती सबै (गृहस्थ) का लागि पूजनीय हुन्छन् । त्यसैले घरमा आएका योगीलाई राम्ररी पूजा गर्नु पर्दछ ।

**तस्न्प्रियुक्ता या पूजा साक्षयायोपकल्पते ।**
**गृहमेधिनां यत्प्रोक्तं स्वर्गसाधनमुत्तमम् ॥१४॥**

यसरी गरिने योगी-पूजाको फल कहिल्यै नाश हुँदैन । गृहस्थका लागि स्वर्गप्राप्त गर्ने उत्तम साधनका बारेमा बताउँदछु ।

**ब्राह्मं मुहूर्त उत्थाय तत्सर्वं सम्यगाचरेत् ।**
**चतुःप्रकारं भिद्यन्ते गृहिणो धर्मसाधकाः ॥१५॥**

ब्राह्म मुहूर्तमा उठेर माथि बताइएका सबै कर्म गरी सदाचारमा रहनू । धर्मसिद्ध आचरण गर्ने गृहस्थ चार प्रकारका हुन्छन् ।

**वृत्तिभेदेन सततं ज्यायांस्तेषां परः परः ।**
**कुसूलधान्यको वा स्यात्कुंभीधान्यक एव वा ॥१६॥**

वृत्ति अनुसार यि गृहस्थ क्रमशः उत्तम हुन्छन् । तीन वर्ष खान पुग्नेगरी अन्न जोहो गर्ने एक वर्ष खान पुग्नेगरी अन्नको जोहो गर्ने,..।

**त्र्यहैहिको वापि भवेत्सद्यःप्रक्षालकोपि वा ।**
**श्रौतं स्मार्त्तं च यत्किंचिद्विधानं धर्मसाधनम् ॥१७॥**

तीन दिनलाई पुग्नेगरी अन्न सञ्चय गर्ने र एक दिनलाई पुग्नेगरी त्यही दिनको अन्न सञ्चय गर्ने गृहस्थ । वेद र स्मृतिमा बताइएका जेजस्ता कर्म छन् ती कर्म नै धर्मका साधन कर्म हुन् ।

**गृहे तद् वसता कार्यमन्यथा दोषभाग्भवेत् ।**
**एवं विप्रो गहस्थस्तु शान्तः शुक्लाम्बर शुचिः ॥१८॥**

गृहस्थले य सबै कर्म पूरा गर्नु पर्नेछ, अन्यदा दोष लाग्दछ । यसरी शान्त, सेतो वस्त्र पहिरिने र शुद्ध गृहस्थी ब्राह्मणले...।

**प्रजापतेः परं स्थानं सम्प्राप्नोति न संशयः ॥१९॥**

ब्रह्मलोक प्राप्त गर्दछ भन्ने कुरामा कुनै द्विविधा छैन ।

**॥ इति वैष्णशधर्मशास्त्रे द्वितीयोऽध्यायः ॥२॥**

॥ वैष्णव धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
भावानुवाद गरिएको दोश्रो अध्याय सकियो ॥



## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)

**गृहस्थो ब्रह्मचारी वा वनवासं यदा चरेत् ।**
**चीरवल्कलधारी स्यादकृष्टान्नाशनो मुनिः ॥१॥**

जब गृहस्थ वा ब्रह्मचारी वनवासमा जान्छ तब पीतवस्त्र वा रुखका बोक्रा लगाउनू, खेती नगरी आफैं उम्रिएका अन्न खानू र मौन रहनू ।

**गत्वा च विजनं स्थानं पञ्चयज्ञान्न हापयेत् ।**
**अग्निहोत्रं च जुहुयादन्नैर्नीवारकादिभिः ॥२॥**

निर्जन स्थानमा बसेर पनि पञ्चयज्ञ गर्न नछाड्नू । वनवासमा रहँदा ब्रह्मचारीले अन्न वा नाभो अन्न अदिले होम पनि गर्नू ।

**श्रावणेनाग्निमादाय ब्रह्मचारी वने स्थितः ।**
**पञ्चयज्ञविधानेन यज्ञं कुर्यादतन्द्रितः ॥३॥**

वनमा रहेका ब्रह्मचारीले साउन महिनामा अग्निलाई आधान गरी पञ्चयज्ञको विधिले यज्ञ गर्नू ।

**सञ्चितं तु यदारण्यं भक्तार्थं विधिवद्वने ।**
**त्यजेदाश्वयुजे मासि वन्यमन्यत्समाहरेत् ॥४॥**

वनमा खानका लागि विधिपूर्वक सञ्चित गरिएका अन्न असौज महिनामा त्याग्नू वा दान गर्नू र बनबाट नयाँ अन्न बटुल्नू ।

**आकाशशायी वर्षासु हेमन्ते च जलाशयः ।**
**ग्रीष्मे पञ्चाग्निमध्यस्थो भवेन्नित्यं वने वसन् ॥५॥**

वर्षामा आकाशमा (खुल्ला अग्लो स्थानमा) र हेमन्तमा जलाशय नजिक सुत्नू । वनमा रहँदा ग्रीष्म ऋतुमा सधैं पञ्चाग्निका बीचमा बस्ने गर्नू ।

**कृच्छ्रं चान्द्रायणं चैव तुलापुरुषमेव च ।**

**अतिकृच्छ्रं प्रकुर्वीत त्यक्त्वा कामान् शुचिस्ततः ॥६॥**

कृच्छ्र, चान्द्रायण, तुलापुरुष, अतिकृच्छ्र जस्ता व्रत शुद्ध र निष्काम भावले सम्पन्न गर्नू ।

**त्रिसन्ध्यं स्नानमातिष्ठेत्सहिष्णुर्भूतजान्गुणान् ।**
**पूजयेदतिथींश्चैव ब्रह्मचारी वनं गतः ॥७॥**

पञ्चमहाभूतका गुणलाई सहँदै तीनै कालमा नुहाउने गर्नू । वनवासी भएको ब्रह्मचारीले अतिथिको पनि पूजा गर्नू ।

**प्रतिग्रहं न गृह्णीयात्परेषां किंचिदात्मवान् ।**
**दाता चैव भवेन्नित्यं श्रद्दधानः प्रियंवदः ॥८॥**

आत्माको स्वरूपलाई जानी अरुले दिएको दान नलिनू । मृदुभाषी र श्रद्धालु भई दिनहुँ दान दिने गर्नू ।

**रात्रौ स्थंडिलशायी स्यात्प्रपदैस्तु दिनं क्षिपेत् ।**
**वीरासनेन तिष्ठेद्वा क्लेशमात्मन्यचिन्तयन् ॥९॥**

आफैंले बनाएको मञ्चमा रातमा सुत्नू । घुमेर दिन बिताउने गर्नू वा मनमा क्लेश नराखी वीरासनमा बस्नू ।

*नोट : बायाँ घुँडा मारेर दाहिने घुँडा उठाएर बसिने वा गोडा पछाडि हुने गरी एक घुँडा मारेर त्यसको तिघ्रामा अर्को गोडा राख्दा हुने हठयोगको एक आसनलाई वीरासन भनिन्छ ।*

**केशरोमनखश्मश्रून्न छिन्द्यान्नापि कर्त्तयेत् ।**
**त्यजन् शरीरसौहार्दं बनवासरतः शुचिः ॥१०॥**

कपाल, रौं, नङ, दाह्री नकाट्नू नछिनाल्नू । वनमा बस्न रुचाउने भई शुद्ध मनले आफ्नो शरीरको माया नगरी उपरोक्त कर्म गरी रहनू ।

**चतुःप्रकारं भिद्यन्ते मुनयः शंसितव्रताः ।**
**अनुष्ठान विशेषेण श्रेयांस्तेषां परः परः ॥११॥**

यसरी कठोर व्रत गर्ने मुनि चार प्रकारका हुन्छन् । अनुष्ठान विशेष पूरा गर्ने दृष्टिले यिनीहरू क्रमशः श्रेष्ठ हुन्छन् ।

**वार्षिकं वन्यमाहारमाहृत्य विधिपूर्वकम् ।**
**वनस्थधर्ममातिष्ठन्नयेत्कालं जितेन्द्रियः ॥१२॥**

एक वर्षसम्म पुग्ने गरी विधिपूर्वक आहार आदि जोरजम्मा गर्ने, वानप्रस्थी, इन्द्रियजित् र प्रमादविहीन भई समय बिताउने ...।

**भूरिसंवार्षिकश्चायं वनस्थः सर्वकर्मकृत् ।**
**आदेहपतनं तिष्ठेन्मृत्युं चैव न कांक्षति ॥१३॥**

यी सबै कर्म गर्ने वानप्रस्थीलाई "भूरिसंवार्षिक" भनिन्छ । आमरण वनमा बसेर पनि मृत्यु नचाहने भएका,...।

**षण्मासांस्तु ततश्चान्यः पञ्चयज्ञक्रियापरः ।**
**काले चतुर्थे भुञ्जानो देहं त्यजति धर्मतः ॥१४॥**

पञ्चयज्ञकर्ममा सधैं तत्पर रहने, छ महिनाका पुग्ने अन्न सञ्चय गर्ने, जीवनको चौथो सन्ध्याकालमा भोजन गर्दै, सधर्म देहत्याग गर्ने दोश्रा थरी वानप्रस्थी हुन्छन् ।

**त्रिंशद्दिनार्थमाहृत्य वन्यान्नानि शुचिव्रतः ।**
**निर्वर्त्य सर्वकार्याणि स्याच्च षष्ठान्नभोजनः ॥१५॥**

तीस दिनका लागि पुग्ने अन्न सञ्चय गरी शुद्धव्रत धारण गरी शास्त्र बमोजिमका सब गर्नुपर्ने कर्म गर्दै दिनको छैटौं भागमा एक पटक भोजन गर्ने तेश्रा थरीका वानप्रस्थ हुन्छन् ।

**दिनार्थमन्नमादाय पञ्चयज्ञक्रियारतः ।**
**सद्यःप्रक्षालको नाम चतुर्थः परिकीर्तितः ॥१६॥**

चौथो थरीका मुनि एक दिनका लागि पुग्ने अन्न सञ्चय गरी पञ्चयज्ञकर्म सम्पन्न गर्न सधैं लागि पर्दछन् । यिनलाई "सद्यः प्रक्षालक" भनिने गर्दछ ।

**एवमेते हि वै मान्या मुनयः शंसितव्रताः ॥१७॥**

यि तीक्ष्ण एवं कठोर व्रतधारी चारै थरी मुनि पूजनीय हुन्छन् ।

**॥ इति वैष्णशधर्मशास्त्रे तृतीयोऽध्यायः ॥३॥**

॥ वैष्णव धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा भावानुवाद गरिएको तेश्रो अध्याय सकियो ॥



## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)

**यथोत्तमानि स्थानानि प्राप्नुवन्ति दृढव्रताः ।**
**ब्रह्मचारी गृहस्थो वानप्रस्थो यतिस्तथा ॥१॥**

दृढव्रत बस्ने ब्रह्मचारी, गृहस्थी, वानप्रस्थी र सन्यासीले जसरी उत्तम स्थान पाउँदछन् तसको विधि यस्तो हुन्छ-।

**विरक्तः सर्वकामेषु पारिव्रज्यं समाश्रयेत् ।**
**आत्मन्यग्नीन्समारोप्य दत्त्वा चाभयदक्षिणाम् ॥२॥**

सारा चाहनाबाट विरक्त भएर संन्यासी बनी आफ्नो आत्मामा नै सबै खाले अग्निहरूलाई समाहित गरी स्त्री आदिलाई अभयदानको दक्षिणा दिन्छन् (त्याग गर्दछन्) र..।

**चतुर्थमाश्रमं गच्छेद् ब्राह्मणः प्रवजन्गृहात् ।**
**आचार्येण समादिष्टं लिङ्ग यत्नात्समाश्रयेत् ॥३॥**

घरगृहस्थी त्यागी जो ब्राह्मण चौथो आश्रममा प्रवेश गर्दछ उसले आचार्यले बताए बमोजिमका दण्ड, कमण्डलु आदि चिह्न प्रयत्नपूर्वक बोक्नू (धारण गर्नू) ।

**शौचमाश्रमसम्बद्धं यतिधर्मांश्च शिक्षयेत् ।**
**अहिंसां सत्यमस्तेयं ब्रह्मचर्यमफल्गुताम् ॥४॥**

सन्यास आश्रमका शौच विधि र सन्यास-धर्मका बारेमा सिक्नू । हिंसा, असत्यता र चोरीलाई त्यागी ब्रह्मचर्यमा रही निरर्थक कुरालाई त्याग्नू ।

**दयां च सर्वभूतेषु नित्यं यतद्यतिश्चरेत् ।**
**ग्रामान्ते वृक्षमूले च नित्यकालनिकेतनः ॥५॥**

सन्यासीले सबै प्राणीलाई नित्य दया गर्नू । गाउँको नजिक कुनै रुखको फेदमा स्थाई वासस्थान बनाउनू ।

**पर्यटेत्कीटवद्भूमिं वर्षास्वेकत्र संविशेत् ।**
**वृद्धानामातुराणां च भीरूणां सङ्गवर्जितः ॥६॥**

कीरा जसरी पृथ्वीमा घुमिरहनू, वर्षाकालमा एकठाउँमा बस्नू, वृद्ध-रोगी र भयभीतहरूको सङ्गत नगर्नू ।

**ग्रामे वापि पुरे वापि वासो नैकत्र दुष्यति ।**
**कौपीनाच्छादनं वासः कन्थां शीतापहारिणीं ॥७॥**

वर्षमा एउटै गाउँ, शहर वा स्थानमा वास बस्नाले सन्यासी दूषित हुँदैन । लँगौटी, चिसो छेक्न ओढ्ने र..।

**पादुके चापि गृह्णीयात्कुर्यान्नान्यस्य संग्रहम् ।**
**संभाषणं सह स्त्रीभिरालंभप्रेक्षणे तथा ॥८॥**

खराउ बोक्नू । यसबाहेक अरु कुनै कुरा नराख्नू । स्त्रीसँग कुराकानी नगर्नू, तिनलाई नछुनू र नहेर्नू ।

**नृत्यं गानं सभां सेवां परिवादांश्च वर्जयेत् ।**
**वानप्रस्थगृहस्थाभ्यां प्रीतिं यत्नेन वर्जयेत् ॥९॥**

नाच्न, गाउन, सभामा सामेल हुन, उनको सेवा गर्न, कुराकानी गर्न तथा वानप्रस्थी र गृहस्थीसँग मायामोह गर्न प्रयत्नपूर्वक छाड्नू ।

**एकाकी विचरेन्नित्यं त्यक्त्वा सर्वपरिग्रहम् ।**

**याचितायाचिताभ्यां तु भिक्षया कल्पयेत् स्थितिम् ॥१०॥**

सबै दान छाडी एक्लै विचरण गर्नू । मागेर वा नमागी जे पाइन्छ त्यसैले जीवन चलाउनू ।

**साधुकारं याचितं स्यात्प्राक्प्रणीतमयाचितम् ।**
**चतुर्विधा भिक्षुकाः स्युः कुटीचकवहूदकौ ॥११॥**

राम्रो भनेर दिएको लिनुलाई याचित र नमागी जे पाइन्छ त्यो लिनुलाई अयाचित भनिन्छ । सन्यासी चार थरी हुन्छन् । कुटीचक, बहूदक, ..।

**हंसः परमहंसश्च पश्चाद्यो यः स उत्तम ।**
**एकदण्डी भवेद्वापि त्रिदण्डी वापि वा भवेत् ॥१२॥**

हंस र परमहंस । यी क्रमशः श्रेष्ठ हुन्छन् । यी उत्तम सन्यासीले एक वा तीन दण्ड धारण गर्नू ।

**त्यक्त्वा सर्वसुखास्वादं पुत्रैश्वर्यसुखं त्यजेत् ।**
**अपत्येषु वसेन्नित्यं ममत्वं यत्नतस्त्यजेत् ॥१३॥**

सारा सुखका अनुभव छाड्नू, पुत्रको प्रताप एवं ऐश्वर्यसुख छाड्नू, आफैंमा वास गर्नू (भर पर्नू) र प्रयत्नपूर्वक मायालाई छाड्नू । (अपत्य-छोरा, वा वंशज) ।

**नान्यस्य गेहे भुञ्जीत भुञ्जानो दोषभाग्भवेत् ।**
**कामं क्रोधं च लोभं च तथेर्ष्यासत्यमेव च ॥१४॥**
**कुटीचकस्त्यजेत्सर्वं पुत्रार्थं चैव सर्वतः ।**
**भिक्षाटनादिकेऽशक्तो यतिः पुत्रेषु संन्यसेत् ॥१५॥**
**कुटीचक इति ज्ञेयः परिव्राट् त्यक्तबान्धवः ।**

अरुका घरमा गएर नखानू, खाए दोष लाग्दछ । काम, क्रोध, लोभ, मोह, इर्ष्या, असत्य र सबै कुराको सामिप्यता पुत्रका लागि जसले परित्याग गर्दछ, भिक्षा माग्न नसक्ने भएपछि जुन् सन्यासीले आफ्नो छोरोलाई आफ्नो शरीर सुम्पन्छ त्यसलाई कुटीचक सन्यासी भनिन्छ ।

**त्रिदण्डं कुण्डिकं चैव भिक्षाधारं तथैव च ॥१६॥**
**सूत्रं तथैव गृह्णीयान्नित्यमेव बहूदकः ।**

**प्राणायामेऽप्यभिरतो गायत्रीं सततं जपेद्॥१७॥**

अन्य सबै खाले बन्धुलाई जसले त्यागेको छ, यस्तो त्रिदण्ड, कुण्डल, भिक्षा पात्र र जनै हमेशा लगाउने सन्यासीलाई बहूदक सन्यासी भनिन्छ । यी प्राणायाम गर्न तत्पर हुने गर्दछन् र हमेशा गायत्री जप्ने गर्दछन् ।

**विश्वरूपं हृदि ध्यायन्नयेत्कालं जितेन्द्रियः ।**
**ईषत्कृतकषायस्य लिङ्गमाश्रित्य तिष्ठतः ॥१८॥**
**अन्नार्थं लिङ्गमुद्दिष्टं न मोक्षार्थमिति स्थितिः ।**

यी मनले भगवान्को ध्यान गर्दै इन्द्रियलाई जिती समय बिताउन् । चिह्न सन्यासीको मर्यादा हो, गेरु वस्त्र लगाउने सन्यासीले अरु चिह्न लिनु भनेको मोक्षका लागि नभई खानका लागि हो भनिएको छ ।

**त्यक्त्वा पुत्रादिकं सर्वं योगमार्गव्यवस्थितः ॥१९॥**

सबै घरपरिवार त्यागी योगमार्गमा टिकेर ..।

**इन्द्रियाणि मनश्चैव कर्षन्हंसोभिधीयते ।**
**कृच्छ्रैश्चान्द्रायणैश्चैव तुलापुरुषसंज्ञकैः ॥२०॥**
**अन्यैश्च शोषयेद् देहमाकाङ्क्षान्ब्रह्मण पदम् ।**
**यज्ञोपवितं दण्डं च वस्त्रं जन्तुनिवारणम्॥२१॥**

इनिद्रय एवं मनलाई वशमा राख्ने सन्यासीलाई हंस सन्यासी भनिन्छ । कृच्छ्र, चान्द्रायण, तुलापुरुष र अन्य व्रतले ब्रह्मपद चाहने सन्यासी आफ्नो शरीर सुकाउँदछ । जनै र दण्ड धारण गर्दछ । कुनै जीवजन्तु शरीरमा नखसुन् भनेर वस्त्र बेर्दछ ।

**अयं परिग्रहो नान्यो हंसस्य श्रुतिवेदिनः ।**
**आध्यात्मिकं ब्रह्म जपन्प्राणायामांस्तथाचरन्॥२२॥**

वेदज्ञले हंसका लागि यिनै विधान बताएका  छन्, अरु होइन । चौथो प्रकारको सन्यासी आफ्नै आत्मामा रहेका परम ब्रह्मको जप गर्दछ र नियमितरूपमा प्राणायाम गर्दछ ।

**वियुक्तः सर्वसङ्गेभ्यो योगी नित्यं चरेन्महीं ।**

**आत्मनिष्ठः स्वयंयुक्तस्त्यक्तसर्वपरिग्रहः ॥२३॥**

सबै खाले सङ्गतिभन्दा बाहिर रहेर आफ्नो आत्मामा आत्मनिष्ठ भई उसले सबै प्रकारका दान त्यागि दिएको हुन्छ । उ नित्य पृथ्वीमा घुमिरहन्छ ।

**चतुर्थोयं महानेषां स्थानभिक्षुरुदाहृतः ।**
**त्रिदण्डं कुण्डिकां चैव सूत्रं चाथ कपालिकाम् ॥२४॥**

यी चार थरीका सन्यासीमा श्रेष्ठ स्थान भिक्षु वा परमहंसको हो भनिएको छ । त्रिदण्ड, कुण्डिका, जनै, खप्पर, ...।

**जन्तूनां वारणं वस्त्रं सर्वं भिक्षुरिदं त्यजेत् ।**
**कौपीनाच्छादनार्थं च वासोधश्च परिग्रहेत् ॥२५॥**

जीवजन्तुबाट जोगिने वस्त्र आदि सबै भिक्षुकले त्याग्नू । लँगौटी र ओढ्ने मात्र धारण गर्नू ।

**कुर्यात्परमहंसस्तु दण्डमेकं च धारयेत् ।**
**आत्मन्येवात्मना बुद्ध्या परित्यक्तशुभाशुभः ॥२६॥**

परमहंस गर्नू, एउटा लौरो पनि बोक्नू । आत्माले सबै शुभ अशुभ कुरा छाड्नू ।

**अव्यक्तलिङ्गोऽव्यक्तश्च चरेद्भिक्षुः समाहितः ।**
**प्राप्तपूजो न सन्तुष्येदलाभे त्यक्तमत्सरः ॥२७॥**

आफ्ना चिह्न र आफूलाई अप्रकट गर्दै सावधान भई घुमफिर गर्नू, प्रंशसा वा पूजाबाट खुशी वा दुःखी हुने नगर्नू ।

**त्यक्ततृष्णः सदा विद्वान्मूकवत्पृथिवीं चरेत् ।**
**देहसंरक्षाणार्थं भिक्षामीहेद्द्विजातिषु ॥२८॥**

तृष्णा त्यागी लाटोझैं चूपचाप भई पृथ्वी घुम्नू र प्राण रक्षाका लागि द्विजसँग भिक्षा माग्नू ।

**पात्रमस्य भवेत्पाणिस्तेन नित्यं गृहानटेत् ।**

भिक्षुकको भाँडो भनेको हात नै हो यही लिएर (भिक्षा माग्दै) नित्य घरघर डुल्नू ।

**अतैजसानि पात्राणि भिक्षार्थं क्लृप्तवान्मनुः ॥२९॥**
**सर्वेषामेव भिक्षूणां दार्वलावुमयानि च ।**
**कांस्यपात्रे न भुञ्जीत आपद्यपि कथञ्चन ॥३०॥**

मनुले भिक्षाका लागि धातुबाहेकका भाँडा प्रयोग गर्नू भनेका छन् । सबै खाले भिक्षुकले काठ वा तुम्बा आदिका भाँडा प्रयोग गर्नू । आपदै परे पनि काँसका भाँडामा नखानू ।

**मलाशाः सर्व उच्यन्ते यतयः कांस्यभोजिनः ।**
**कांसिकस्य तु यत्पापं गृहस्थस्य तथैव च ॥३१॥**
**कांस्यभोजी यतिः सर्वं तयोः प्राप्नोति किल्विषम् ।**

जुन् सन्यासी काँसका भाँडामा खान्छ, उसलाई मल (दिसा) खाने सन्यासी भनिएको छ । काँसका भाँडा बनाउने र त्यसमा खाने गृहस्थीलाई जुन् पाप हुन्छ, ती दुबैको त्यो पाप काँसका भाँडामा खाने सन्यासीलाई प्राप्त हुन्छ ।

**ब्रह्मचारी गृहस्थश्च वानप्रस्तो यतिस्तथा ॥३२॥**
**उत्तमां वृत्तिमाश्रित्य पुनरावर्त्तयेद्यदि ।**
**आरूढपतितो ज्ञेयः सर्वधर्मबहिष्कृतः ॥३३॥**
**निन्द्यश्च सर्वदेवानां पितृणां च तथोच्यते ।**

जुन् ब्रह्मचारी, गृहस्थ, वानप्रस्थ र सन्यासी उत्तम आचरणलाई स्वीकार गरी फेरी त्यसलाई त्याग गर्दछ त्यसलाई आरूढपतित भनी जान्नू । यस्ता व्यक्ति सबै धर्मबाट बहिष्कृत हुन्छन् । यस्ता सबै व्यक्ति देवता र पितृबाट निन्दित हुन्छन् ।

**त्रिदण्डं लिङ्गमाश्रित्य जीवन्ति वहवो द्विजाः ॥३४॥**
**न तेषामपवर्गोऽस्ति लिङ्गमात्रोपजीविनाम् ।**

सन्यासी बनेर धेरै द्विज जीवन धानिरहेका हुन्छन् । तर भेष मात्र सन्यासीको बनाउनेहरुलाई मोक्ष प्राप्त हुँदैन ।

**त्यक्त्वा लोकांश्च वेदांश्च विषयानिन्द्रियाणि च ॥३५॥**

**आत्मन्येव स्थितो यस्तु प्राप्नोति परमं पदम् ।**

जो मानिस लोक, वेद, विषय, इन्द्रिय आदिलाई छाडी आत्मचिन्तनमा तल्लिन हुन्छ, उ नै मोक्ष हुन्छ ।

**॥ इति वैष्णवधर्मशास्त्रे चतुर्थोऽध्यायः ॥४॥**

॥ वैष्णव धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
भावानुवाद गरिएको चौथो अध्याय सकियो ॥



## ॥ अथ पञ्चमोऽध्यायः ॥
## (पाँचौं अध्याय)

**राज्ञां तु पुण्यवृत्तानां त्रिवर्गपरिकांक्षिणाम् ।**
**वक्ष्यमाणस्तु यो धर्मस्तत्त्वतस्तन्निबोधत ॥१॥**

पवित्र आचरण भएका तथा धर्म, अर्थ र काम चाहने राजाहरूको जुन धर्म हुन्छ, त्यो म बताउँदछ, तिमी सुन ।

**तेजः सत्यं धृतिर्दाक्ष्यं संग्रामेष्वनिवर्तिता ।**
**दानमीश्वरभावश्च क्षत्त्रधर्मः प्रकीर्तितः ॥२॥**

तेज, सत्यता, धैर्य, चलाखी, युद्धबाट नभाग्नु, दान र न्याय-यी क्षत्रिय धर्म हुन् ।

**क्षत्रियस्य परो धर्मः प्रजानां परिपालनम् ।**
**तस्मात्सर्वप्रयत्नेन रक्षयेन्नृपतिः प्रजाः ॥३॥**

प्रजालाई पालनपोषण गर्नु क्षत्रियको परम धर्म हो । यसैले प्रयत्नपूर्वक राजाले प्रजालाई रक्षा गर्नू ।

**त्रीणि कर्माणि कुर्वीत राजन्यस्तु प्रयत्नतः ।**
**दानमध्ययनं यज्ञं ततो योगनिषेवणम् ॥४॥**

क्षत्रिय (राजा)ले प्रयत्नपूर्वक दान, अध्ययन र यज्ञ-यी तीन कर्म गर्नू र त्यसपछि योगमार्गमा लाग्नू ।

**ब्राह्मणानां च संतुष्टिमाचरेत्सततं तथा ।**
**तेषु तुष्टेषु नियतं राज्यं कोशश्च वर्धते ॥५॥**

सधैं ब्राह्मण सन्तुष्ट हुने कार्य गर्नू, ती प्रसन्न हुँदा राजाको राज्य र राजकोष बढ्ने गर्दछ ।

**वाणिज्यं कर्षणं चैव गवां च परिपालनम् ।**
**ब्राह्मणक्षत्त्रसेवा च वैश्यकर्म प्रकीर्तितम् ॥६॥**

ब्यापार, कृषि, गाईपालन तथा ब्राह्मण र क्षत्रियको सेवा गर्नू वैश्यका कर्म हुन् भनिएको छ ।

**खलयज्ञं कृषीणं च गोयज्ञं चैव यत्नतः ।**
**कुर्याद्वैश्यश्च सततं गवां च शरणं तथा ॥७॥**

यसका साथै वैश्यले प्रयत्नपूर्वक खलोमा गरिने यज्ञ, कृषि र गोयज्ञ गर्नु पर्दछ तथा गोठको हेरचाह पनि गर्नुपर्दछ ।

**ब्राह्मणक्षात्रवैश्यांश्च चरेन्नित्यममत्सरः ।**
**कुर्वंस्तु शूद्र शुश्रूषां लोकान् जयति धर्मतः ॥८॥**

शूद्रले शुद्ध मनले द्विजको नित्य सेवा गर्नू । यसरी गरिएको सेवाले उ सबै लोकलाई धर्मले नै जित्दछ ।

**पञ्चयज्ञविधानं तु शूद्रस्यापि विधीयते ।**
**तस्य प्रोक्तो नमस्कारः कुर्वन् नित्यं न हीयते ॥९॥**

शूद्रका लागि पनि पञ्चयज्ञ गर्ने विधान छ । शूद्रले नमस्कार गर्नु हुन्छ नमस्कार गर्नाले उ पतित हुँदैन ।

**शूद्रोपि द्विविधो ज्ञेयः श्राद्धी चैवेतरस्तथा ।**
**श्राद्धी भोज्यस्तयोरुक्तो ह्यभोज्यस्त्वितरो मतः ॥१०॥**

शूद्र दुई प्रकारका हुन्छन्-एक थरी श्राद्धकर्मका अधिकारी र अर्का थरी अनधिकारी । श्राद्धकर्मका अधिकारीको अन्न भोजन गर्न हुन्छ, अनधिकारीको हुँदैन ।

**प्राणानर्थांस्तथा दारान्ब्राह्मणार्थं निवेदयेत् ।**
**स शूद्रजातिर्भोज्यः स्यादभोज्यः शेष उच्यते ॥११॥**

जुन शूद्रले आफ्नू प्राण, धन, स्त्री आदि विप्रको सेवामा अर्पण गर्दछ त्यस्तो शूद्रको भोजन भोज्य र अरु शूद्रको भोजन अभोज्य हुन्छ ।

**कुर्याच्छूद्रस्तु शुश्रूषां ब्रह्मक्षत्रविशां क्रमात् ।**
**कुर्यादुत्तरयोर्वैश्यः क्षत्रियो ब्राह्मणस्य तु ॥१२॥**

शूद्रले क्रमैले ब्राह्मण, क्षत्रिय र वैश्यको सेवा गर्नू । वैश्यले ब्राह्मणको र क्षत्रियको तथा क्षत्रियले ब्राह्मणको सेवा गर्नू ।

**आश्रमास्तु त्रयः प्रोक्ता वैश्यराजन्ययोस्तथा ।**
**पारिव्राज्याश्रमप्राप्तिर्ब्राह्मणस्यैव चोदिता ॥१३॥**

वैश्य र क्षत्रियका लागि ब्रह्मचर्य, गृहस्थ र वानप्रस्थ आश्रम भनिएका छन् । तर सन्यासाश्रम ब्राह्मणका लागि मात्र भनिएको छ ।

**आश्रमाणामयं प्रोक्तो मया धर्मः सनातनः ।**
**यदत्राविदितं किंचित्तदन्येभ्यो गमिष्यथ ॥१४॥**

यी चारै आश्रमका सनातन धर्मका विधि मैले बताएँ । केही कुरा तिमीले नजाने नबुझे अरु ग्रन्थ पढेर (पनि) थाहा पाउनेछौ ।

**॥ इति वैष्णवधर्मशास्त्रे पञ्चमोऽध्यायः ॥५॥**
॥ वैष्णव धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
भावानुवाद गरिएको पाँचौं अध्याय सकियो ॥



**॥ इति वैष्णवधर्मशास्त्रः ॥**
॥ वैष्णव धर्मशास्त्रको मोहनप्रसाद सापकोटाद्वारा नेपालीमा
भावानुवाद गरिएको वैष्णवधर्मशास्त्र सकियो ॥

